# मृत्यु जीवन र ब्रह्माण्डको रहस्यमय अदभुत सत्यता

लेखक

अतीकुर्रहमान मु.इदरीस खान मक्की

ഇരു

संशोधक

मुहम्मद इदरीस सलफी

بسم الله الرحمن الرحيم




To connect Author: 0501372254

للتواصل مع المؤلف: 0501372254

लेखकसित सम्पर्क गर्ने नं. ०५०१३७२२५४



प्रथम प्रकाशन साल सन् २०१५ ई. सं.

नि:शुल्क वितरणको लागि मात्र


## पुस्तक पाइने ठेगाना -:

इस्लामिक गाइडेन्स सेन्टर कपिलवस्तु नगरपालिका
व.नं. ९ महुवा तौलिहवा कपिलवस्तु (नेपाल)
सम्पर्क नं. ००९७७९८१९४३७७५८
सउदी नं. 00966-0501372254

इस्लामिक गाइडेन्स सेन्टर रबवा अल् रियाज सउदी अरबीया

# प्रस्तावना

अलहम्दु लिल्लाहि नहमदुहु वनस्तईनुहु व नस्तगफिरहु वनऊजु बिल्लाहि मिन शुरूरि अनफुसिना वमिन सईयाति आमालिना, मैंयहदिहिल्लाहु फलामुजिल्ला लहु व मैंयुजलिल्हु फलाहादिया लहु वअश्हदु अल्लाइलाहा इल्लल्लाहु व अश्हदु अन्ना मोहम्मदन् अब्दुहु व रसूलुहु । (अम्मा बअ्द)

हरेक प्रकारको प्रशंसा अल्लाहको लागि छ जसले सर्म्पूण ब्रह्माण्डलाई उत्पन्न गऱ्यो, र अल्लाहको शान्ति अवतरित होस् अन्तिम संदेष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम र उहाँको घर परिवार र साथीहरू माथि र उनी सबैहरू माथि जुन यस इस्लामको प्रचार प्रसार गरे र मुहम्मदको पद्धतिलाई उत्तम मानी उसैमाथि हिंडी आफ्नो जीवन व्यतीत गरे ।

प्रस्तुत पुस्तकमा मैले त्यो सबै प्रश्नहरूको उत्तर दिने प्रयास गरेछु जुन हाम्रो हृदयमा असमंजस जस्तो अवस्था उत्पन्न गर्छन्, र जीवन मृत्यु ब्रह्माण्डको चक्रलाई प्रष्ट पार्ने प्रयास गरेको छु, साथै

सर्वमान्य एवं सर्वव्यापी धर्म इस्लामका केही महत्पपूर्ण निर्देशनहरू प्रमाण सहीत प्रसतुत गर्ने सहास गरेछु। र इस्लामको सत्यतालाई साइन्टिफिक एवं प्राकृतिक प्रमाणहरू द्वारा सिद्ध गर्ने प्रयास गरेको छु। र यो सिद्ध गर्ने प्रयास गरेको छु कि वास्तविक सत्य धर्म र सत्य पूज्य एउटै छ र यस ब्रह्माण्डको संचालक एउटै छ र त्यो नै सत्य पूज्य हो त्यस बाहेक कुनै ईष्ट पूजा योग्य छैन....आदि । र आफ्नो प्रत्येक दावीमाथि हाम्रो विवेकले स्वीकार्ने र मान्नेवाला प्रमाण प्रस्तुत गरेको छु । यो किताब विशेष गरी गैर मुस्लिमहरूको लागि लेखेको छु जिनीहरूलाई इस्लामको सत्यताबारे पूर्ण जानकारी छैन ।

मलाई आशा छ कि यो सानो पुस्तकबाट तपाईहरूलाई सत्यको ज्ञान हुने छ । र यो पुस्तक तपाईहरूको लागि लाभप्रद सिद्ध हुनेछ। अल्लाह सित विन्ती छ कि मेरो यो सानो प्रयासलाई कबूल गरी मेरो र मेरो घरपरिवारका समस्त सदस्यहरूको मुक्तिको माध्यम बनाउन्, र विशेष गरी मेरो आमा बुवालाई आफ्नो विशेष कृपाको पात्र बनाउन् जहाँहरूको मोह मायाले गर्दा नै म यस योग्य भएको छु कि अल्लाहको धर्मलाई सर्वसाधारण सम्म पुऱ्याऊँ र अनभिज्ञ एवं भ्रमित व्यक्तिहरूलाई सुमार्ग देखाऊँ। हे अल्लाह हाम्रो

आमा बुवा र घरका अन्य सदस्यहरूलाई मुक्ति प्रदान गरी स्वर्गमा स्थान प्रदान गर (आमीन)

**लेखक**

**अतीकुर्रहमान मुहम्मद इदरीस खान मक्की**

**कपिलवस्तु नगरपालिका वार्ड नं. ९ महुवा**

**तौलिहवा कपिलवस्तु (नेपाल)**

email- atiqkhannp1982@yahoo.com

**सम्पर्क नं. ००९७७९८१९४३७७५८**

**सउदी मो. न. ००९६६५०१३७२२५४**

बिस्मिल्लाहिर्रहमानिर्रहीम

यस संसारमा विभिन्न प्रकारका धर्महरू छन्, त्यस मध्ये कतिपय मनुष्यले बनाएका मिथ्या धर्म हुन्, त कतिपय ईश्वरीय धर्म । त कतिपय जना त ईश्वरमा विश्वास नै राख्दैनन्, त कतिपय जना मात्र विज्ञानमा आस्था राख्छन् । तर केही यस्ता प्रश्नहरू छन् जसको उत्तर कसैसंग छैन । आउनुस् त्यसैबारे केही ज्ञानवर्धक कुराहरूमाथि विचार गरौं ।

हे प्रिय पाठकहरू ! मृत्यु के हो ? यो कब र कसरी आउँछ ? यो यस्ता प्रश्नहरू हुन् जसको उत्तर यस ब्रह्माण्डमा कसैलाई थाहा छैन । त्यसबारे हामीलाई त्यति नै ज्ञान छ जति हामीलाई ब्रह्माण्डको चालक सम्पूर्ण जगतको रचयताले आफ्नो सन्देष्टाहरू द्वारा जानकारी गराएको छ ।

यस प्रश्नले सम्पूर्ण संसारलाई हैरान पारेको छ, वैज्ञानिकहरू आफ्नो अंथक प्रयास र खोजगरे पनि यस प्रश्नको उत्तर दिनुमा पूर्णरूपले विफल

भएका छन् । उनीहरूको यो विफलताको कारण के हो ? के यस्तो समय पनि आउँछ जब यस प्रश्नको उत्तर मिल्ने छ ?

मनुष्य कहाँदेखि कहाँ पुग्यो, चन्द्रमाथि पुग्यो, र सूर्यमाथि पुग्ने प्रयासमा छ , तर आफ्नै जीवनको एक मात्र सत्यता जसमाथि सम्पूर्ण जीवधारीहरूको एकमत छ त्यसको रहस्यलाई पाउन असमर्थ छ किन ?

यो ब्रह्माण्ड कसरी उत्पन्न भयो यसमा विद्वानहरू र वैज्ञानिकहरू बीच ठूलो मतभेद छ, तर मृत्युमाथि कसैको पनि मतभेद छैन तै पनि ज्यान ( रूह ) के हो ? मनुष्यको शरीरमा यो कस्तो तथ्य हो ? कसरी हालिन्छ ? कसरी निस्कन्छ ? कसैलाई आज सम्म थाहा भएन । बरु कुनै मान्छे यो भन्न सक्दैन कि भोलीको सूर्य त्यो हेर्नसक्छ कि सक्दैन ।

यस संसारमा अनेकौं जातिहरू छन्, सबैको रंग, रूप, स्वभाव, आस्था, धर्म भिन्न छन् । कतिपय ईश्वर अल्लाहमा आस्था राख्छन् त

कतिपय आफूलाई नै ईश्वर भन्छन्, त कतिपय कुनै ईश्वर छैन भन्छन् । तर यी सबैको एकमत छ कि मृत्यु अवश्य आउँछ । अर्थात सबैमा समानता र एकता केवल एउटै कुरामा छ त्यो हो मृत्यु, सबैलाई यसमाथि अटूट विश्वास छ कि चाहे कोही धर्मलाई र ईश्वरलाई मानोस् वा नामानोस् त्यसलाई मृत्यु अवश्य आउने छ ।

जसले यो भन्छ कि ईश्वर छैन के त्यो यस मृत्युलाई रोक्न सक्छ ? छ कुनै यस संसारमा जुन यो दावी गर्न सकोस् कि म यसलाई अर्थात मरने क्रमलाई रोक्न सक्छु ? र यो उत्तर दिन सकोस् कि मृत्यु किन आउँछ यसको रहस्य के हो ? छ कसैसंग उत्तर ?

यसको रहस्य जान्नुको लागि सारा संसारमा भएका प्राणिहरूको वर्गीकरण गर्नु अति आवश्यक छ तब नै हामी कुनै निष्कर्षमा पुग्न सक्छौं । र यस कुरामा पनि विचार गर्नुपर्छ कि यो संसार आफै चलिरहेछ अथवा यसलाई कुनै शक्ति चलाई रहेछ । अनि यसमाथि पनि विचार गर्नु आवश्यक छ कि

त्यो सर्वशक्तिमान को हो ? कहाँ छ ? कसरी यस संसारलाई चलाई राखेछ ............. आदि ।

यो सबै प्रश्नहरूको उत्तर खोज्दा सर्वप्रथम हामीले संसारमा बस्ने समस्त जीवधारीहरूको वर्गीकरण गर्नुपर्छ । ब्रह्माण्डमा जनावर, मनुष्य, ढुङ्गा, धरती, आकाश, चराचुंगी, सूर्य चन्द्र, घासपात, बोटबिरुवा, ..... आदि सृष्टिहरू छन् ।

स्रष्टाले आफ्नो सृष्टिलाई दुई भागमा विभाजित गरेको छ, अथवा यो भनम् कि सम्पूर्ण सृष्टि दुई भागमा विभाजित छ जीवधारी, निर्जीव । तर साइन्टिस्टहरू ( वैज्ञानिकहरू ) को कथन बमोजिम सम्पूर्ण सृष्टिमा ज्यान छ, तर कसरी ? यो सिद्ध भए छैन तै पनि हामी यो भनम् कि सृष्टिमा सबै जीवधारी नै छन् र सबै सृष्टि एउटै वर्गमा आउँछ, अर्थात सबै जीवधारी नै छन् । फेरि पनि वर्गीकरण त हुने नै छ र त्यो हो!

१ - अकल बुद्धि भएका जीवधारीहरू जसरी : मनुष्य ।

२ - अकल बुद्धि नभएका जीवधारीहरू जसरी : जनावर पखेटाहरू ।

र मनुष्यलाई अरु सबै जीवधारीहरू माथि यसै कारण प्रधानता र श्रेष्ठता प्रदान छ कि त्यो बुद्धिमान छ । जनावर मनुष्य जस्तो कदापि हुन सक्दैन यो सबैको कथनबाट सिद्ध छ । अब मनुष्यमा पनि कालो गोरो, सानो ठूलो, बुद्धिमान बुद्धिहीन...आदि छन् । यो वर्गीकरण किन ? के यसमा पनि रहस्य छ ?

फेरि मनुष्य भित्र ईश्वरलाई मान्नेहरू पनि छन् र नमान्नेहरू पनि । र मान्नेहरू भित्र कतिपय सम्भूतिलाई ईश्वर भन्छन् त कति असम्भूतिलाई । त कतिपय बहुदेववाद माथि विश्वास राख्छन् त कतिपय 1+1+1=1 मा विश्वास राख्छन् । हामी जब सम्म उपरोक्तका प्रश्न र आस्थाहरूको सत्यरूपमा उत्तर पाउँदैनौं तब सम्म जीवन र मृत्युको रहस्य पनि पाउँदैनौं ।

पहिला हामी त्यस प्रश्नको उत्तर तर्फ लागौं जसमा यो सोधिएको छ कि ब्रह्माण्डको निर्माण

कसरी भयो, के कसै शक्तिले यसको निर्माण गऱ्यो वा आफै निर्मित भयो ।

एउटा कथन अनुसार यो ब्रह्माण्ड एक्कासी उत्पन्न भयो, यसको कोही निर्माता छैन । यस भनाई अनुसार कुनै ईश्वर छैन, बरु यो संसार आफै गतिशील छ । तर यो कथन अति निर्बल कम्जोर प्रमाणहीन र असत्यतामा निर्भर छ, किनकी बिना निर्माता कुनै वस्तु आफै निर्मित हुन सक्दैन । निर्मित वस्तु नै निर्माताको सबै भन्दा ठूलो प्रमाण हो, किनकी निर्मित वस्तु निर्माता तर्फ संकेतगर्छ । यसैले हामी यस कथनलाई अमान्य र अस्वीकार्य गरी यसलाई यहीँ विराम दिन्छौं ।

अब यो प्रश्न उठ्छ कि यदि निर्माता छ भने एउटै छ अथवा अनेक छन् वा तीन छन् ?

पहिला यो बुझ्नुस् कि जिनले यो भन्छन् कि ईश्वर तीन छन् ( 1+1+1=1) अर्थात पिता + छोरा + रूहुल् कुद्स = ईश्वर । उनीहरू आज सम्म यो जवाफ दिन सकेनन् कि तनी एउटा कसरी हुन सक्छ सबैलाई थाहा छ कि 1+1+1=3

हुन्छ, अर्थात तीन एक र एक तीन कसरी हुन सक्छ ? पूरा संसारमा यस कुरालाई कुनै व्यक्ति प्रमाणित गर्न सक्दैन, यसै कारण यो आस्था पनि सत्यताको तुलामा खरा र सत्य पाइएन। (एक तीन , र तीन एक , यो ईसाईहरूको आस्था हो )

अब बाँकी रह्यो ऊ सबैको कथन जसमा भनिएछ कि प्रत्येक पस्तु ईश्वर हो । अर्थात सम्भूति र असम्भूति र बहुदववादमा आस्था राख्नु। हामीले यो सिद्ध गरेछौं कि निर्मित वस्तु निर्माता तर्फ संकेत गर्छ जसरी सूर्य, चन्द्र, आगो, मनुष्य आदि यी सबै यो प्रमाणित गर्छन् कि कुनै छ जसले यिनीलाई निर्माण गरेछ। फेरि निर्मित वस्तु निर्माता कसरी हुन सक्छ ? अर्थात ईश्वर कसरी हुन सक्छ ? र जुन ईश्वर होइन त्यो अराधना योग्य पनि छैन । अब यो प्रष्ट भयो कि सम्भूति र असम्भूति ईश्वर कदापि हुन सक्दैनन् ।

अब हाम्रो मस्तिष्कमा यो प्रश्न आउँछ फेरि ईश्वर को हो ? जुन अराधना योग्य छ , ब्रह्माण्डको रचनाको रहस्य के हो ? किन त्यस रचयताले यसलाई सृष्टि गऱ्यो ? के त्यो स्रष्टा एक

भन्दा अधिक हुन सक्छ ? यो प्रश्नहरूको उत्तर हेर्दाखेरि हामीलाई यो थाहा हुनुपर्छ कि यदि हाम्रो देश नेपालको राजा अथवा हाम्रो घरको मुखिया (चालक)( Had family) एक भन्दा अधिक भएको भए के हुन्छ, यस कुरालाई यस्तो बुझ्नुस् कि देशका सबै नागरिकहरू आफैलाई मुखिया वा राजा ठानुन् वा घरका सबै सदस्यहरू आफूलाई नै घरचलाउने व्यक्ति ठानुन् भने के हुन्छ ? फूट विद्रोह .... आदि, देशको कुरै नगर्नुस् मात्र एउटा घर पनि मात्र एउटै शासक बिना चल्दैन यदि दुई वा त्यस भन्दा अधिक शासक भएको खण्डमा विद्रोह मारपिट आदि हुन्सक्छ भने यो विशाल संसारलाई दुई वा दुई भन्दा अधिक स्रष्टाले कसरी चलाउन सक्छन् र कसरी हुन् सक्छन् ।

हामीले यो ब्रह्माण्डलाई हेर्दाखेरि यो आभास हुन्छ कि यस ब्रह्माण्डको प्रत्येक वस्तु अआफनो स्थानमा अति संतुलित छ त्यसको त्यो ठाउँ नै त्यसको लागि उचित र उत्तम छ, यदि दुई स्रष्टा भएको भए यो कदापि हुन सक्दैन्थ्यो ।

अर्थात यो संसारको संतुलन यस कुरामा संकेत गर्दछ कि उसको स्रष्टा एउटै छ र त्यो नै प्रशंसा एवं पूजा अराधना योग्य छ। त्यो नै सत्य पूज्य हो। त्यो बाहेक सबै पूज्य ईश्वर उपासकहरू मिथ्या र झुठा छन् अमान्य र अस्वीकार्य छन्। फेरि जुन मनुष्यहरू यो भन्छन् कि एक भन्दा अधिक ईश्वर छन् वा एक भन्दा अधिकलाई पूजा अराधना गर्छन् र भन्छन कि मलाई पनि यो थाहा छ कि पूज्य, ईष्ट, उपासक, अराध्य, ईश्वर, अल्लाह मात्र एउटै छ। र मलाई यो पनि थाहा छ कि त्यही एउटै पूज्यले नै समस्त ब्रह्माण्डको रचना गरेछ र त्यो नै यसको संचालक हो, र जुन म यस सूर्य, चन्द्र, नबी, वली, मूर्ति, जनावर आगो .... आदिलाई पूजा अराधना गर्छु त्यो त मात्र यस कारण कि यिनीहरू ईश्वर पूज्यका निकट्तम् र प्रियतम् भक्त, देवता, फरिश्ता, आदि हुन् यिनीहरू ईश्वर त होइनन् तर हामीलाई ईश्वर निकट लाभ पुऱ्याउन सक्छन्। अर्थात हाम्रो सिफारिश गरेर स्वर्गमा प्रवेश गराउन सक्छन्, र यिनीहरूको पूजा नगरेको खण्डमा हामीलाई हानि बिहोर्नु पर्छ। यस

जस्ता आस्था राख्नेहरू पनि यस संसारमा छन् र सबै भन्दा अधिक संखयामा छन् । तर उनीहरूलाई यो थाहा छैन कि त्यो महान स्रेष्टाको दृष्टिमा सम्पूर्ण स्रष्टि र मानवजाति एकनास छन् ऊ सबैको पुकार सन्नेवाला छ हामी र हाम्रो स्रेष्टा बीच कुनै माध्यमको अवश्यकता छैन । जसलाई हामी माध्यम बनाउँछौ तिनीहरू जुन कार्य गरेर अल्लाहको निकट्तम् र प्रियतम् भए, त्यही कार्य गरेर हामी पनि आफ्नो पूज्यको प्रियतम् बन्न सक्छौं । फेरि किन चाहियो माध्यम भन्नुस् । र आर्को कुरो के छ भने त्यो महान स्रष्टा सर्वगुण सम्पन्न यस कुराबाट अति क्रोधित हुन्छ कि त्यसले बनाएका सृष्टिलाई त्यसै जस्तो पूजा गरियोस् वा त्यसै जस्तो त्यस सृष्टिबाट पनि भयत्रास खाइयोस् ।

सोच्नुस् जब एउटा मान्छे आफनो समानता अरुसित गर्दाखेरि आफूलाई आर्काको दाँजोमा श्रेष्ठ ठान्छ र त्यसलाई यो कदापि स्वीकार्य हुँदैन कि कुनै मान्छे त्यसको बराबरी गरोस् अथवा त्यसै जस्तो मनुष्य त्यसको समानता

गरोस् त हाम्रो पूज्य यस कुरालाई कसरी सहन गर्न सक्छ । र आर्को कुरो यो पनि ज्ञात रहोस् कि के कुनै मनुष्य यो सहन गर्न सक्छ कि उसको स्वास्नी कुनै आर्को पुरुषसंग शारिरिक सम्बन्ध राखोस् ? कदापि होइन यो कुनै पनि मानव सहन गर्न सक्दैन, किन ?

जुन त्यस स्रष्टाको एउटा सानो र तुच्छ सृष्टि हो त्यो यस्तो कुरालाई सहन गर्न सक्दैन भने त्यो महान स्रष्टा आफ्नो समानता त्यसैले बनाएको कुनै सृष्टिबाट कसरी सहन गर्न सक्छ विचार गर्नुस् । अनि त्यो सर्वशक्तिमान किन क्रोधित नहोस्, के कुनै शक्ति त्यस सर्वशक्ति सम्पन्नलाई आफ्नो वशमा गर्न सक्छ ? कदापि होइन यदि यस्तो हुन्थ्यो भने हामी अवश्य मृत्युमाथि विजय प्राप्तगरि सकेका हुन्थ्यौं । तर यस्तो सम्भव छैन, यसै कारण म आब ब्रह्माण्डको रहस्यतिर लाग्छु ।

यो ब्रह्माण्ड संतुलित छ किनकि यसको रचयता मात्र एउटै शक्तिमान अल्लाह हो । यस ब्रह्माण्डमा नर नारी, भाले पोथी, विशेषरूपले प्रत्येक जीवजन्तु भित्र राखिएछ ताकि संसार

अल्लाहद्वारा निर्धारित समय सम्म संचालित रहोस् । विचार गर्नुस् यदि यस संसारमा मात्र नर अथवा मात्र नारी भएको भए के हुन्थ्यो ? वा मात्र मनुष्य अथवा मात्र जनावर भएको भए के हुन्थ्यो ? र यस्तै अरु सबैको बारेमा विचार गर्नुस् ? तात्पर्य यो कि यो सृष्टिमा जे जति छन् सबै ठीक मात्रामा र ठीक स्थानमा छन् । यदि चोर, डाकूहरू सत्यवान र निष्ठावान ठहर हुन्थे, र साधारण एवं सज्जन मान्छेहरू दोषी ठहर हुन्थे भने के हुन्थ्यो ? मानव आफ्नो पाइलाले नहिंडी टाउकोले हिंडथ्यो भने कस्तो हुन्थ्यो ? यस्ता प्रश्नहरूको उत्तरमा विचार गर्दाखेरि यो थाहा हुन्छ कि जेजति यो संसारमा छ र जुन अवस्थामा छ त्यो नै उचित र उत्तम छ । यदि सबै धनवान र समृद्ध अथवा सबै निमुखा र गरीब भएको भए यो संसारको दशा के हुन्थ्यो ? यस जस्ता सबै प्रश्नहरूको उत्तर मात्र यो नै हो कि अल्लाहले जसलाई जुन अवस्थामा राखेका छन् त्यसको लागि त्यही नै उत्तम छ यसैले गर्दा यो संसारको संतुलन कायम छ कुनै कुरा पनि

यताउता भएको अवस्थामा यो संसारको विनाश हुनेछ ।

अब यो प्रश्न उठछ कि यस संसारलाई पालनकर्ताले किन संचालित गऱ्यो ? किन निर्माण गऱ्यो ? यसको के अवश्यकता थियो ? स्वर्ग, नर्क, सूर्य, चन्द्र, वायु ....आदिलाई किन जन्मायो ?

यो सबै प्रश्नहरूको दुई शब्दमा उत्तर यो हो कि " मनुष्यको लागि " मनुष्यको परीक्षा लिनुको निम्ति ।

अनि यो प्रश्न उठछ कि यदि यो सबै मनुष्यहरूका लागि सृष्टि गरियो, फेरि मनुष्यलाई किन सृष्टि गरियो ?

यसको पनि उत्तर दुई शब्दमा नै दिन सकिन्छ " मनुष्यलाई आफ्नो पूजा अराधनाको लागि जन्मायो " अल्लाहको फर्मान छ : " वमा खलकतुल् जिन्ना वल्इन्सा इल्ला लेयअ्बुदून "

अर्थ : र हामीले मानव र दानवहरूलाई मात्र आफ्नो पूजा गर्नुको लागि नै सृष्टि गरेका हौं । ( सूरतुज्जारियात ५६ )

र मात्र मानव र दानवहरू होइन बरु यो ब्रह्माण्डमा भएका समस्त सृष्टिहरू अल्लाहको गुणगान गर्छन्, र त्यसैले निर्धारित गरेका कार्यहरू गर्छन् । केवल मनुष्य नै मूर्ख छ जसले आफ्नो उपासकको अवज्ञा गऱ्यो र आफ्नो सत्य पूज्यलाई छाडी आफूले बनाएका मिथ्या उपासकहरूको उपासना गर्न थाल्यो ।

उपरोक्तका सबै प्रश्नहरूको उत्तर हामीलाई मात्र ईश्वरको अन्तिम सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम माथि अवतरित गरिएको ग्रन्थ कुरआनबाट नै प्राप्त हुन् सक्छ । अर्थात सबै रहस्यमय प्रश्नहरूको उत्तर र सबै समस्याको निवारण यस ग्रन्थमा उल्लेख छ । र ती सबै प्रश्नहरू जसको उत्तर खोज्दा सबै विद्वानहरू र वैज्ञानिकहरू असफल भए त्यो सबै प्रश्नहरूको उत्तर कुरआनमा उल्लेख छ । यो अन्तिम आकस्मिक ग्रन्थ हो, र इस्लाम अन्तिम पथ,

जसमाथि चली समस्त संसारको कल्याण हुन् सक्छ ।

के कसैलाई थाहा छ कि आत्मा के हो ? के कसैले आत्मालाई हेरेको छ ? के वैज्ञानिकहरू यसको जवाफ दिन सक्छन् ? के कसैसित कुनै उत्तर छ ?

छैन कसैसित यसको उत्तर छैन । तर कुरआन यसको उत्तर दिन्छ, कि आत्मा हेर्ने वस्तु होइन कि तिमीहरू हेरी हाल बरु त्यो अल्लाहको वाणी र आदेशद्वारा प्रचलित हुने वस्तु हो जसको वास्तविकता अल्लाह बाहेक कसैलाई थाहा छैन । अल्लाहको फर्मान छ :

अर्थ : र तिमीसँग आत्माको (रूहको) बारेमा यिनीहरू प्रश्न गर्दछन् । भनिदिनुस् कि त्यो मेरो पालनकर्ताको हुक्मबाट छ । तिमीहरूलाई निकै कम ज्ञान प्रदान गरिएको छ । ( सूरतुल् इस्रा ८५ )

मृत्युको फरिश्ता आएर हाम्रो शरीरबाट रुईबाट सियो तान्ने अवस्था भैंâ तानेर लग्छ, अनि

हामी भन्छम् कि मान्छेको मृत्यु भयो । के हो यो मृत्यु ?

सबैको एक ईश्वरमा एकमत होस नहोस् तर मृत्युमाथि सबैको एकमत छ, तर मृत्यु कस्तो हुन्छ कसैसित उत्तर छैन ।

मृत्यु हो जीवनको अन्तिम पडाव (बास), अन्तिम अतिथि, यस्तो अतिथि जसको आउने समय, आउने तरिका, आउने ठाउँ कसैलाई थाहा छैन । कब आउँछ, कुन अवस्थामा आउँछ, कुन स्थानमा आउँछ के कसैलाई थाहा छ ?

कुरआन भन्छ कि मृत्युको समय, स्थान, अवस्था मात्र त्यही पालनकर्तालाई थाहा छ जुन यस ब्रह्माण्डको रचयता हो ।

अल्लाहको फर्मान छ :

अर्थ : निःसन्देह कयामत (अन्तिमदिन) को ज्ञान अल्लाहलाई नै छ। र उसैले जल बृष्टि गराउँछ र उसैले गर्भाशयहरूमा भएको कुरा जान्दछ । र कुनै व्यक्तिलाई थाहा छैन कि भोली

उसले के गर्नेछ। र कुनै मानिसलाई थाहा छैन कि कुन भू-भागमा उसको मृत्यु हुने छ। (यादराख) अल्लाह नै सबै जान्नेवाला, र प्रत्येक कुरोसित अवगत छ। ( सूरतु लुकमान ३४ )

हे प्रिय पाठकहरू ! मृत्यु अदभुत सत्य हो, मृत्यु पश्चात के हुन्छ के तपाईलाई थाहा छ ? हामीलाई यो अन्तिम अतिथिको स्वागत कसरी गर्नुपर्छ के तपाईलाई थाहा छ ?

हे प्रिय पाठकहरू ! के तपाईलाई थाहा छैन कि मृत्यु पश्चातको जीवन कस्तो हुनेछ ? के यो जस्तो भावना तपाईको हृदयमा आउँदैन यदि आउँछ भने उत्तर खोई ?

कुरआन यस रहस्यलाई पनि पूर्णत: खोल्छ , र हामीलाई बताउँछ कि मनुष्यको ३ जीवनहरू छन्। सांसारिक जीवन, मृत्यु पश्चातको जीवन ( बर्जखी जीवन ), यस जीवनबारे सत्य ज्ञान अल्लाह बाहेक कसैलाई छैन, र महाप्रलय पश्चात सदैवको जीवन अर्थात स्वर्गीय अथवा नर्कीय जीवन।

हे मानवगण ! हाम्रो लागि सबै भन्दा महत्वपूर्ण विन्दु मृत्यु नै छ किन भने सबैलाई चाहे अन्चाहे मृत्युको स्वाद चाख्नु नै पर्छ । चाहे त्यो शक्तिमान शासक होस् वा शक्तिशाली फरिश्ता, चाहे त्यो राजा होस् अथवा प्रजा, चाहे त्यो समृद्ध होस् वा गरीब, चाहे त्यो गोरो होस् अथवा कालो, चाहे त्यो भाले होस् वा पोथी सबैलाई मृत्युको रसस्वाद चाख्नु नै पर्छ । तत पश्चात अधिकतम् धर्महरूका निर्देशनानुसार मानव आफ्नो कर्म बमोजिम अर्थात कर्मको आधारमा स्वर्ग अथवा नर्कमा जानेछ ।

यसै कारण हे मेरा आदर्णीय पाठकहरू अब मेरो अगाडीका कुराहरू माथि ध्यान दिने सादर निवेदन छ !

हे मानवगण ! के तपाईलाई थाहा छैन कि तपाईको अन्तिम अतिथि कसै समय तपाईको समक्ष प्रकट हुन सक्छ, त्यो यस्तो अतिथि हो जसलाई कुनै सांसारिक शक्ति, धन सम्पत्ति....आदि रोक्न सक्दैन, र त्यो अतिथि निर्दयी पनि छ, कसैमाथि दया गर्दैन, त्यो घुसपात पनि लिंदैन,

त्यसलाई धन सम्पत्ति चाहिंदैन । त्यो त मात्र तिम्रो शिकारी हो त्यो मात्र तिमीलाई चाहन्छ, तिम्रो अन्त चाहन्छ, त्यसको आगमन तिम्रो प्रस्थान सिद्ध हुनेछ ।

प्रश्न यो उठछ कि हामी यस्तो अतिथिको स्वागत कसरी गरौं ? हामी के गरौं जसले गर्दा त्यो अतिथि हामीलाई हानि पुऱ्याउन नसकोस् ? र हाम्रो अन्त हाम्रो अनन्त आनन्दमा प्रेणित र परिवर्तित भई जाहोस् ?

हे आदर्णीय पाठक विन्द ! यस अन्तिम र रहस्यमय अतिथिको स्वागत गर्नुको लागि केही महत्वपूर्ण कुराहरू वर्णन गर्दछु त्यसलाई ध्यान दिएर अध्यन गर्नुहोला र त्यस बमोजिम आफ्नो जीवन व्यतीत गर्ने प्रयत्न गर्नुहोला, हेर्नुस् !

सर्वप्रथम यस्तो धर्मको निर्देशनहरूलाई अपनाउनुस् जुन तपाईलाई मुक्तिको जमानत देओस्, र तपाईको भूत (विगत) वर्तमान र भविष्यलाई सुरक्षित गरोस् ।

यदि तपाई यस्तो धर्मको खोज गर्नु हुनेछ भने तपाईलाई यस्तो धर्म मात्र एउटै भेटिन्छ जुन तपाईलाई समस्त दिशाहरूबाट सुरक्षा प्रदान गर्छ, र प्रत्येक प्रश्न र समस्याको समाधान गर्छ र त्यो धर्म हो **इस्लाम** जसको अर्थ नै शान्ति हो । जुन समस्त ब्रह्माण्डको लागि शान्ति नै शान्ति हो । जुन मनुष्य दानव र फरिश्तादेखि चरापखेटा सम्मको अधिकारको सुरक्षा सुनिश्चित गर्छ । र उल्लंघनकारीलाई दण्डित गर्छ, चाहे त्यो अमीर होस्, वा गरीब होस्, र सबैको हक अधिकार सुनिश्चित र निर्धारित गर्छ, र एक आर्काको हकलाई छुट्ट्याई सुरिक्षत पार्छ ।

यदि हामी त्रीलोकीय जीवनलाई हाँसी खुशी व्यतीत गर्न चाहन्छौं र अन्तिम अतिथिको स्वागत निर्भय भएर गर्न चाहन्छौं भने हामीलाई इस्लामी सिद्धान्त अपनाउनु नै पर्छ । केही महत्वपूर्ण इस्लामी निर्देशनहरू र सिद्धान्तहरू निम्न हुन् !

* एक अल्लाह (पूज्य) माथि आस्था राख्नु र मात्र उसैको पूजा अराधना गर्नु, उसैलाई

पालनकर्ता, स्रष्टा मान्नु, किनकि ब्रह्माण्ड र मृत्यु एवं जीवनको अदभुत र रहस्यमय सत्यता यो नै हो कि ती सबैको स्रष्टा नै पूजा योग्य छ, यसलाई हामी अघि नै सिद्ध गरिसकेका छौं । अल्लाहको फर्मान छः

अर्थ : समस्त प्रशंसा त्यस अल्लाहका लागि नै छन् जुन सम्पूर्ण ब्रह्माण्डको पालनकर्ता हो । ( सूरतुल् फातिहा १ )

र आर्को ठाउँमा अल्लाहको वर्णन छ :

अर्थ : हामीले हरेक समुदायमा पैगम्बर पठायौं कि मानिसहरू अल्लाहकै पूजा गरुन्, र उस बाहेक अन्य समस्त पुज्यहरूलाई त्यागिहालुन् अनि तिनीहरू मध्ये केही यस्ता छन्, जसलाई अल्लाहले मार्ग दर्शन गऱ्यो र केही यस्ता छन जो मार्ग बिचलनमा परे । तसर्थ तिमी स्वयम् पृथ्वीमा घुमफिर गरेर हेरिहाल कि (सत्यलाई) झुठो भन्नेहरूको परिणाम कस्तो भयो ? ( सूरतुन्नहल ३६ )

र आर्को ठाउँमा अल्लाहको भनाई छः

अर्थ : नि:सन्देह तिम्रो पालनकर्ता त अल्लाह नै हो, जसले आकाश र पृथ्वीलाई छ (६) दिनमा सृष्टि गऱ्यो । अनि आफू सिंहासनमाथि उच्च भयो । उसैले प्रत्येक कुराको प्रबन्ध र सञ्चालन गर्दछ । कसैले (उसको समीपमा) उसको अनुमति प्राप्त न गरिकन् सिफारिश गर्न सक्तैन । यही अल्लाह तिम्रो पालनकर्ता हो, तसर्थ उसैको पूजा गर । के तिमीहरू अझै उपदेश ग्रहण गर्दैनौ । ( सूरतु यूनुस ३ )

* त्यस अल्लाहको सम्पूर्ण फरिश्ताहरू माथि आस्था राख्नु । र यो आस्था राख्नु कि उनीहरू पूजा योग्य छैनन् बरु पूजा योग्य त त्यो महान शक्तिमान छ जसले यी फरिश्ताहरूको सृष्टि गऱ्यो । र फरिश्ताहरूको जीवन पनि त्यसै एक शक्तिवान माथि संकेत गर्छ । अल्लाहको फर्मान छ :

अर्थ : हे मोमिनहरू ! अल्लाहमाथि र उसको रसूलमाथि र जुन ग्रन्थ अल्लाहले आफ्नो पैगम्बरलाई प्रदान गरेको छ, र त्यसमाथि जुन

ग्रन्थहरू त्यो भन्दा अगाडि उतारेको थिए, सबैमाथि आस्था राख । र जसले अल्लाह र फरिश्ताहरू र उसका ग्रन्थहरू र उसका पैगम्बरहरू र अंतिम दिनको इनकार गर्दछ ऊ पथभ्रष्ट भई वास्तविक मार्गबाट धेरै टाढा पुगिसकेको हुन्छ । ( सूरतुन् निसा १३६ )

* त्यस अल्लाहको समस्त नबी एवं रसूलहरू ( दूत एवं सन्देष्टाहरू ) माथि आस्था राख्नु । र यो आस्था राख्नु कि अल्लाहका अन्तिम संदेष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम हुन् । र उहाँले ल्याएको धर्म नै मान्य छ, र उनैद्वारा संसारका सम्पूर्ण धर्महरू स्थगित भए । र उनैको मार्फत हामीलाई मृत्यु जीवन र संसारको रहस्यको जानकारी भयो, र त्रीलोकमा उत्तीर्ण एवं सफल हुनुको बाटो प्राप्त भयो । उहाँलाई सर्वसंसारको लागि शान्ति दूत बनाएर पठाइयो । एक अल्लाहको अराधना गर्ने पाठ उहाँले यस्तो सरल अन्दाजमा पढाउनु भयो कि अरबका असैक्ष र अनभिज्ञ समुदाय बहुदेववादी र दुराचारीहरूले पनि त्यसलाई स्वीकार गरे । र उनीहरू यस आस्थाले गर्दा

विश्वका सबै भन्दा ज्ञानवान समूहमा प्रेणित एवं परिवर्तित भए ।

मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम नै मानवताको वास्तविक उद्धारकर्ता थिए, जसले उहाँको पद्धतिमा हिंड्यो त्यो सफल भयो, र जसले त्यसबाट मुख फर्कायो त्यसको भाग्य नै नर्क भयो ।

विचार गरेपछि यो थाहा हुन्छ कि अन्य धर्महरूमा केही रसूलहरूलाई रसूल मानिन्छ त कतिपय रसूलहरूलाई रसूल मानिदैन, तर इस्लाम धर्म सम्पूर्ण रसूलहरू मथि ईमान राख्ने आदेश दिन्छ एउटालाई पनि नकारेको अवस्थामा मान्छे अधर्मी भई इस्लामबाट निष्कासित हुनेछ, यस्तो मोहनीय छ इस्लामका निर्देशनहरू । अल्लाहको फर्मान छ :

अर्थ : जुन मानिसहरूले अल्लाह र उसका पैगाम्बरहरूलाई इन्कार गर्दछन् र अल्लाह र उसको पैगाम्बरहरू बीच विभाजन गर्न चाहन्छन् र भन्दछन् कि हामीले केही नबीहरूलाई मान्दछौं र केहीलाई मान्दैनौं र ईमान र कुफ्रको बीचमा एउटा बाटो

निकाल्न चाहन्छन् । उनीहरू निःसन्देह काफिर हुन् र काफिरहरूको लागि हामीले अपमानित सजाय तयार गरी सकेका छौं । ( सूरतुन् निसा १५० )

* अल्लाहद्वारा अवतरित गरिएका सम्पूर्ण ग्रन्थहरू माथि आस्था राख्नु, र यो आस्था राख्नु कि अल्लाहले अवतरित गरे मध्ये अन्तिम ग्रन्थ कुरआन हो । जसको सुरक्षाको जिम्मेवारी अल्लाहले स्वयम् लिनु भए छ । र यो ग्रन्थ अघिका सबै ग्रन्थहरूको पुष्टि गर्नेवाला छ । र तपाईलाई यो पनि थाहा हुनुपर्छ कि कुरआन भन्दा पहिलाका सबै ग्रन्थहरू परिवर्तित भइसकेका थिए यसै कारण अल्लाहले कुरआनद्वारा सबैलाई स्थगित गरिबक्स्यो र कुरआनलाई समस्त संसारको लागि प्रकाशित निर्देशिका बनाएर पठायो जुन महाप्रलय सम्म बाँकी रहने छ । अल्लाहको फर्मान छ :

अर्थ : हे मुस्लिमहरू ! तिमीहरू सबैले भनिदेऊ कि हामी अल्लाह माथि, र जुन किताब हामी तिर उतरियो, र जुन (ग्रन्थहरू) इब्राहीम, इस्माईल, इस्हाक्, याकूब र उनका सन्ततिहरूलाई

प्रदान गरियो, तिनी माथि र जुन मूसा र ईसालाई प्रदान गरियो र जुन अन्य पैगम्बरहरूलाई तिनका पालनकर्ताबाट प्रदान गरिए, तिनीमाथि सम्पूर्ण आस्था राख्दछौं । हामीले ती पैगम्वहरूमा कुनै भेदभाव गर्दैनौं र हामी उही एक अल्लाहका आदेश पालन गर्नेहरू हौं । ( सूरतुल् बकर: १३६ )

र अल्लाहको कथन छ :

अर्थ : हामीले नै यस कुरआनलाई अवतरित गरेका छौं र हामी नै यसको संरक्षक हौं । ( सूरतुल् हिज्र ९ )

* र महाप्रलय माथि आस्था राख्नु, यो आस्था राख्नु कि एउटा यस्तो दिन पनि आउने छ जस दिन सबै प्राणीहरूका कर्महरूको लेखाजोखा हुने छ र त्यस दिन अल्लाहको भयले समस्त सृष्टि कंम्पित हुन्छ, सूर्यलाई पृथ्वीबाट नजिक गरिन्छ, गर्भवती र बच्च भएकी नारीहरू अआफ्ना बच्चाहरूलाई बिर्सिहाल्ने छिन्, सबै नंग्न अवस्थामा हुन्छन्, तर कोही कसैतर्फ हेर्ने छैन, यस्तो भयत्रास सबैमाथि तान्डव गर्नेछ । त्यो यस्तो भयानक दिन

हुनेछ जसको कुनै मान्छे कल्पना पनि गर्न सक्दैन । अल्लाहको फर्मान छ :

अर्थ : हे मानिसहरू ! आफ्नो पालनकर्तासित डर । निश्चय नै कियामतको भूकम्प साह्रै भयङ्कर कुरो हो । जुन दिन त्यसलाई तिमीले देख्ने छौ । (अवस्था यो हुन्छ कि) प्रत्येक दूध ख्वाउने (आमा) आफ्ना दूध खाने बच्चाहरूलाई बिर्सि दिने छिन् र प्रत्येक गर्भवतीको गर्भपात भई जाने छ । र तिमीले मानिसहरूलाई नशा लगेको अवस्थामा देख्ने छौ, जबकि तिनीहरू नशा लागेको हुने छैनन् । तर अल्लाहको सजाय बडो कठोर कुरो हो । ( सूरतुल् हज्ज १,२ )

र आर्को ठाउँमा वर्णन छ :

अर्थ : (त्यो) खडखडाउने चर्को स्वर गर्नेवाला । खडखडाउने के हो ? र तिमीलाई के थाहा कि त्यो खडखडाई दिने के हो ? जुन दिन मानिसहरू यस्ता हुन्छन् जस्तो कि छरिएका भुसुनाहरू । र पहाडहरू धुनिएका रुङ्ग विरङ्गका ऊन जस्ता हुने छन् । फेरि जसका (कर्महरूको)

वज़न गरुङ्गो हुनेछ, ऊ त इच्छित आरामको जिन्दगीमा हुनेछन् । र जसका वज़न हलुको हुनेछन्, उनीहरूको फर्केर जाने ठाउँ "हाविया" ( गहिरो खाल्टो) हो । ( सूरतुल् कारिअः १-९ )

* र भाग्यमाथि र त्यसको भलाई एवं बुराईमाथि आस्था राख्नु । र यो आस्था राख्नु कि जेजति भाग्यमा उल्लेख छ घटित नै हुनेछ, संसारको कुनै शक्ति त्यसलाई रोक्न सक्दैन चाहे त्यो प्रिय नबी एवं स्वर्गदूत किन नहोस् । अल्लाहको फर्मान छ :

अर्थ : निश्चय नै हामीले हरेक कुरालाई निर्धारित नाप र अनुमानमा सृष्टि गरेका छौं । ( सूरतुल् कमर ४९ )

र हदीसमा छ " हजरत जीब्रीलले रसूल सल्लल्लाहो अलैहे वसल्लमसित सोध्नु भयो कि हे मुहम्मद ईमान के हो ? अनि उहाँले भन्नु भयो : ईमानको अर्थ हो कि तिमी आस्था राख अल्लाहमाथि र उसको रसूलहरू माथि र उसका ग्रन्थहरू माथि र महाप्रलय माथि र भाग्य र उसको

बुराई एवं भलाई माथि.... ” ( मुस्लिम किताबुल् ईमान )

र आर्को हदीसमा छ :

अर्थ : मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भयो : अल्लाहले समस्त सृष्टिहरूको भाग्यलाई धरती आकाशलाई सृष्टि गर्नु भन्दा ५० हजार वर्ष अघि नै लेखिबक्स्नु भएको थियो । ( मुस्लिम किताबुल् कदर )

* नमाज पढनु, अर्थात २४ घंटामा ५ बखतको नमाज मुस्लिमहरू माथि अनिवार्य गरिएको छ त्यसलाई निरंत्रताको साथ कायम गर्नु ।

यो नमाज अल्लाहले मुसलमानहरू माथि इस्राको रात्री मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको माध्यमले अनिवार्य गर्‍यो, यसको पूर्णत: पाबन्द रहनु । अल्लाहको फर्मान छ :

अर्थ : र, नमाज़ पढ्ने गर र जकात ( धर्मदाय) दिने गर र ढोग्नेहरूसँग ढोग्ने गर । ( सूरतुल् बकर: ४३ )

* जकात (धर्मदाय) दिनु, अर्थात तिम्रो धन सम्पत्तिमा निसहाय निमुखाहरूको हक छ जकातद्वारा गरीबहरूको सहायता गर्नु, यो जकात र दानबाट एक आपसमा प्रेमभाव उत्पन्न हुन्छ । र दान दिनुको इस्लाममा अति उच्च स्थान छ, दान दिए पश्चात प्रशंसाको लाल्सा नराख्नु केवल अल्लाहको दयाको अभिलाषी रहनु । यदि सबै धनवानहरू असहायहरूलाई दान दिने आरम्भ गरिदिउन् भने हाम्रो समाजको अधिकतम् समस्याहरूको निवारण भइहाल्छ, र चोरी बेईमानीको अन्त हुनेछ, र समाजमा प्रेम सदभावको विस्तार हुनेछ ।

र दान एवं जकात इस्लामको अदभुत महानतालाई दर्शाउँछ । र धन सम्पत्ति एवं गरीबी सबै परीक्षाका माध्यमहरू हुन् कसैलाई गरीबी दिएर अल्लाह परीक्षा लिन्छ, त कसैलाई सम्पत्ति दिएर परीक्षा लिन्छ । तर परीक्षामा त्यही व्यक्ति उतीर्ण हुन्छ जुन प्रत्येक स्थितिमा अल्लाहको आभार प्रकट गर्छ । यसको प्रमाण माथि नै वर्णन गरिसके छु ।

* रमजान महिनाको व्रत बस्नु, व्रतबाट मान्छेलाई भोकको वास्तविक अर्थ थाहा हुन्छ, र उसलाई गरीबको अवस्थाबारे ज्ञान हुन्छ, अनि त्यो असहायको सहायता गर्नुतर्फ प्रवृत्त हुन्छ । अल्लाहको फर्मान छ :

अर्थ : आस्थावानहरू हो ! (मोमिनहरू) तिमीलाई रोजा राख्नु -र्वत बस्नु ) अनिवार्य गरिएको छ जसरी तिमी भन्दा पहिलेका मानिसहरूलाई अनिवार्य गरिएको थियो । जसबाट कि तिमी संयमी बन्न सक । ( सूरतुल् बकर: १८३ )

* अल्लाहको घर ( कअ्बा )को परिक्रमा गर्नु । जस व्यक्तिसित शारीरिक एवं आर्थिक क्षमता छ कि त्यो अल्लाहको घरतर्फ यात्रा गर्न सक्छ भने त्यो व्यक्तिमाथि अनिवार्य भइहाल्छ कि त्यो कम्तीमा एक पटक अल्लाहको घरको यात्रा गरोस् । तपाईलाई यो पनि ज्ञात रहोस् कि हज्जको अवसरमा जुन समानता देखिन्छ अरु कसै धर्ममा यस्तो समानता देखिदैन । अमीर गरीब, गोरो

कालो, रातो सेतो, राजा प्रजा सबै एउटै लुगा लगाई अरफातको मैदानमा अल्लाहको सामुन्ने उभिन्छन्, कसैलाई कसैमाथि प्रधानता प्राप्त हुँदैन। मात्र यो होइन बरु यस्तै प्रत्येक दिनमा ५ चोटि साकार हुन्छ । र यो मात्र मक्कामा होइन बरु नमाज पढदा समस्त संसारमा यस समानतालाई देख्न सकिन्छ। अल्लाहको फर्मान छ :

अर्थ : पहिलो घर (अल्लाहको) जुन मानिसहरूको निम्ति पूजाको लागि निर्धारित गरिएको थियो, त्यहि नै हो जुन मक्कामा अवस्थित छ, कल्याणकारी र (विश्वको निम्ति) मार्गदर्शक छ। यसमा स्पष्ट निशानीहरू छन्, जसमध्ये एउटा इब्राहीमको उभिने स्थल हो। यसमा जो प्रवेश गर्दछ, त्यसले अमन (शान्ति) प्राप्त गर्दछ। मानिसहरू माथि अल्लाहको हक छ कि जसले त्यस घरसम्म पुग्ने सामर्थ्य राख्दछ, त्यसले हज ( धार्मिक यात्रा) गरोस्। कसैले यदि यस आदेशको पालना गर्दैन भने अल्लाह पनि उस सित बरु संसारबाट निस्पृह छ। ( सूरतु आले इम्रान ९६,९७ )

* प्रयाश्चित गर्नु, अर्थात जेजति हामीले कुकर्म गरेका छौं त्यसको क्षमायाचना गर्नु । अल्लाहलाई क्षमायाचना अति प्रिय छ किनकि मान्छेले अल्लाहको अवज्ञा गरे पश्चात यदि यो आभास गर्छ कि त्यसले आफ्नो पालनहारको अवज्ञा गरी ठूलो र जघन्य अपराध गरेको छ अनि क्षमायाचना गर्छ भने अल्लाह अति प्रसन्न हुन्छन् र त्यसको त्रुटिहरूलाई क्षमा गरिदिन्छन् । र यो प्रयाश्चित पनि यस कुरामाथि संकेत गर्छ कि अल्लाहको शक्ति बाहेक कुनै शक्ति छैन जसबाट सहायता मिलोस् र त्यो परम् दयालु नै छ जुन हामीलाई क्षमा दिने गर्छ । र त्यो नै समस्त संसारको सृष्टा एवं संचालक हो, उसैको लागि समस्त ब्रह्माण्डको राजसत्ता छ । अल्लाहको फर्मान छ :

अर्थ : मेरो तर्फबाट भन्नुस् कि “हे मेरा भक्तहरू ! जसले आफूमाथि नै अतिक्रमण गरेका छन्, तिमी अल्लाहको दयाबाट निराश नहोऊ । नि:सन्देह अल्लाहले सारा पापहरूलाई क्षमा

गरिदिन्छ । निश्चय नै ऊ बडो क्षमाशील र अत्यन्त दयावान छ । ( सूरतुज्जोमर ५३ )

र आर्को ठाउँमा वर्णन छ :

अर्थ : उही हो जसले आफ्ना सेवकहरूको प्रायश्चित स्वीकार गर्दछ र उनीहरूको पापहरू क्षमा गर्दछ, र तिमीले जे गर्दछौ सबै जान्दछ । ( सूरतुश्शूरा २५ )

* सुकर्मतर्फ आह्वान गर्नु र कुकर्मबाट रोक्नु । यदि यस्तो न गरियोस् भने समाजमा विगार उत्पन्न हुन्छ र अत्याचार, चोरी, बलात्कार, हत्या, हिंसा आदिबाट हाम्रो समाज हाम्रो देश एवं समस्त संसार विनाशतिर लाग्ने छ, र छरछिमेकी एक आर्काको शत्रु भइहाल्ने छन्, र एक आर्कासित युद्धरत भई संसारको शान्तिलाई ध्वस्त पारिहाल्छन् । यसै कारण एउटा समूह यस्तो हुनुपर्छ जुन भलाईको आदेश गरोस् र बुराईबाट रोकोस् । कुरआनले कतिपय श्लोकहरूमा यसको आदेश गरेको छ, यो कुरआन नै यस संसारको मार्गदर्शक हो । त्यसका निर्देशनहरूलाई अपनाई हामी समस्त

ब्रह्माण्डको कल्याण गर्न सक्छौं । अल्लाहको कथन छः

अर्थ : तिमी मध्ये एउटा समूह यस्तो हुनुपर्छ जसले कि मानिसहरूलाई सदाचारतिर आमन्त्रित गरोस् र सत्कर्मको सन्देश देओस् र दुष्कर्मबाट रोकोस् र तिनै मानिसहरूले मुक्ति प्राप्त गर्नेहरू हुन्छन् । (सूरतु आले इम्रान १०४)

* हक अधिकार, धर्म, धन सम्पत्ति, इज्जत सम्मान आदिको रक्षाको लागि युद्ध गर्नु अनिवार्य छ । युद्ध मध्ये धर्मको रक्षाको लागि युद्ध गर्नुलाई धर्मयुद्ध भन्छन् । अल्लाहको फर्मान छ :

अर्थ : र अल्लाहको मार्गमा त्यस्तै जिहाद ( धर्मयुद्ध ) गर, जस्तो कि जिहाद गर्नुपर्दछ । उसैले तिमीलाई रोजेको छ र धर्मको कुरामा तिमीमाथि कुनै कुरा संकुचित पारेको छैन र तिम्रो निम्ति तिम्रो बाबु इब्राहीम (अलैहिस्सलाम) को धर्मलाई रुचायो । उसले यसभन्दा अगाडिनै र यस कुरआनमा पनि तिम्रो नाम मुस्लिम (आज्ञाकारी) राखेको छ । यस उद्देश्यले ताकि रसूल तिम्रो निम्ति

साक्षी होऊन् । र तिमी अरु मानिसहरूको साक्षी होऊ । अतः तिमीले नमाजको आयोजना गर र जकात देऊ, र अल्लाहसँग आफ्नो सम्बन्धलाई बलियो रूपले समाति राख उही नै तिम्रो सबभन्दा राम्रो संरक्षक र मालिक हो । आहा कति राम्रो मालिक र कती उत्तम मद्दत गर्नेवाला छ । ( सूरुल् हज्ज ७८ )

आज केही इस्लाम विरोधी समूहहरूले इस्लामलाई कलंकित गर्ने उद्देश्यले भन्छन् कि इस्लाम आतंकवादलाई बढाउँछ । जुन मान्छे पनि यो भन्छन् तिनीहरूलाई इस्लाम धर्मसित ईर्ष्या छ किनकि इस्लाम आफ्नो अदभुत र स्वीकार्य निर्देशनहरूको कारणले गर्दा समस्त संसारमा लोकप्रिय भइरहेको छ र पूरा संसारमा दिन प्रतिदिन इस्लाम कबूल गर्नेहरूको संख्या प्रगतिशील हुँदै गइरहेछ यसै कारण इस्लाम विरोधी गुटहरू यसलाई बदनाम गर्नुको यद्देश्य लिई मिथ्या कुराहरू गर्छन् । तर जस धर्मलाई ईश्वरले मनपराई सकेका छन् को छ जुन त्यसलाई मेटाउन सकोस् ? फेरि कुनै धर्मको सत्यता त्यसको निर्देशनहरूमा नीहित

हुन्छ नकि त्यसका अनुयायीहरूको कर्ममा यदि अनुयायीहरू कुकर्मी भइहाले भने यसमा धर्मको के दोष । प्रत्येक समाज र देश एवं धर्ममा केही दुष्टहरू हुन्छन् तिनीलाई प्रमाण बनाई त्यस समाज देश एवं धर्मलाई दोषी ठान्नु कहाँको न्याय हो । अर्थात कसै नेपाली नागरिकले दोष गऱ्यो भने नेपाल राष्ट्रलाई किन दोष दिने के नेपाल सरकारले यो भनेछ कि हे नेपाल बासीहरू तिमीहरू सम्सत संसारमा उदण्डता गरिहिंड । होइन बरु जसले दोष गरेछ त्यही नै दोषी ठहर हुन्छ र त्यही नै दण्डित पनि हुनेछ । यस्तै इस्लामले कुनै किसमिको आतंक मचाउनुबाट रोकेको छ । अल्लाहको फर्मान छ :

अर्थ : यस कारणले हामीले इस्राईलका मानिसहरूका लागि यो आदेश गऱ्यौं कि यदि कुनै मानिसले कुनै मानिसको हत्या गर्दछ कसैको हत्या गरेको वा देशमा उपद्रव फैलाउने बाहेकको अवस्थामा, भने त्यसले अन्य तमाम मानिसहरूको हत्या गरे सरह हुनेछ, र यदि कसैले एउटाको जीवन बचायो भने सम्पूर्ण मानिसहरूको जीवन बचाए सरह हुन्छ । र तिनीहरू कहाँ हाम्रा धेरै

पैगम्बरहरू स्पष्ट तर्कहरूलिएर पुगिसकेका छन् । अनि यसपछि पनि तिनीहरूमध्ये धेरैले मुलुकमा बलजफ्ती र ज्यादती गर्ने गर्दछन् । ( सूरतुल् माइदः ३२ )

इस्लाम विश्वको सर्वोत्कृष्ट धर्म हो, यसका निर्देशनहरू अदभुत र सर्वमान्य छन्, यसलाई ल्याउने सन्देष्टा सबै सन्देष्टाहरूमा सर्वोच्च छन् । हे मानवजाति यस धर्मलाई ग्रहण गरी आफूलाई आदर देऊ र यसका निर्देशनहरू बमोजिम जीवन व्यतीत गरी आफूलाई नर्कको आगोबाट बचाऊ, र त्यस दिनको भय गर जस दिन सबै आफन्तहरू मुख फर्काई भागिहाल्छन् तिम्रो सुकर्म नै तिम्रो साथी हुनेछ ।

* माता पिताको सेवा सत्कार गर्नु, उनीलाई दुःख नदिनु, उनीहरूको आदेशको पालना गर्नु । जुन व्यक्ति आफ्नो आमा बाबुलाई दुःख दिन्छ त्यो भन्दा अभागा मान्छे इस्लामीय दृष्टिमा अरु कुनै मान्छे छैन, आमा बाबुलाई क्रोधित गर्नु आफ्नो पालनकर्तालाई क्रोधित गर्नु सरह छ ।

आमा बाबुको अधिकार संतानहरू मथि यति छ कि जति सेवा गरे पनि उहाँहरूको अधिकारबाट मुक्त हुन सकिदैन । अल्लाहको फर्मान छ :

अर्थ : र तिम्रो पालनकर्ताले स्पष्ट आदेश गरेको छ कि ऊ बाहेक तिमी कसैको पूजा नगर र आमा-बाबुको साथमा नम्र व्यवहार गर्दै गर यदि तिनीहरूमध्ये एउटा वा दुवै तिम्रो अगाडि वृद्ध अवस्थामा पुग्छन् भने तिनीहरूलाई तिरस्कृत नगर्नु नहप्काउनु अपितु तिनीहरूसँग सम्मानपूर्वक मर्यादित ढंगले कुराकानी गर्नु । र विनम्रतापूर्वक प्यारका साथ तिनीहरूको अगाडि सुशील भईराख र तिनीहरूको निम्ति प्रार्थना गर्ने गर कि हे पालकर्ता जुन प्रकार कि तिनीहरूले मलाई बाल्यावस्थामा ( मायाँले) पालन-पोषण गरेका छन्, तिमीले पनि तिनीहरूमाथि त्यस्तै दया गर । ( सूरतुल् इस्रा २३,२४ )

हे हाम्रा प्रिय पाठकहरू ! आज हाम्रो समाजमा आमा बाबुलाई कति दु:ख दिइन्छ तपाईहरूलाई त थाहै होला । हाम्रो आमाले हामीलाई दूधको रूपमा आफ्नो रगत खुवाउँछिन्

हामीलाई हुर्काउनको लागि र राम्रो सिक्षादिक्षा दिनुको लागि हाम्रो बुवा आमाले कति परिश्रम गर्छन् । तर त्यही आमा बाबु जब वृद्ध अवस्थामा पुग्छन् र उहाँहरूलाई हाम्रो सहाराको अति आवश्यकता हुन्छ तब हामी आफ्नो मुख फर्काइहाल्छम् यस्तो किन ? के यसै समयको लागि उहाँहरूले हाम्रो पालनपोषण गर्नु भयो ?

जब उनीहरूले दुःख उठाई हाम्रो पालनपोषण गर्न सक्नु हुन्छ त हामी किन नगर्न सक्ने ? उनीहरूको पालो आउँदा आँखा किन चिम्ल्याउने, उनीहरूले जब बाल्यकालमा हाम्रो हात समाति प्रथम पाइला भूँईमा टेकनुमा सहायता गर्न सक्नु हुनेछ भने हामी उहाँहरूको बुढेसकालमा सहारा किन बन्न सक्दैनौं ?

हे मानवगण ! विचार गर र सत्य मार्गमा स्थिर भएर अगाडी बढ । कुनै मान्छे महान हुँदैन त्यसको कर्म महान हुन्छ । हामी कर्म योगी हौं, यो संसार परीक्षा कोठा हो, र अल्लाहका निर्देशनहरू त्यो उत्तरहरू हुन् जस बमोजिम कर्म गरी हामी

अल्लाहको प्रसन्नता र स्वर्गमा जाने सौभाग्य प्राप्त गर्न सक्छौं ।

इस्लामीय निर्देशन अनुसार आमा बुवा अल्लाह पश्चात तिम्रो पालनकर्ता हुन् । यदि अल्लाहको स्नेहको आभास गर्न चाहनुहुन्छ भने आफ्नो आमाको स्नेहलाई हेर । साथै यो ज्ञात रहोस् कि अल्लाहको स्नेह आफ्नो सृष्टिको लागि यति अधिक छ कि त्यस स्नेहको कुनै आमा कल्पना पनि गर्न सक्दैन । यही कारण हो कि अल्लाह आफ्नो सृष्टिको लागि परम् दयालु छ, त्यसको कृपा एवं दयाको कुनै सीमा छैन । तर यो स्नेह, दया, करुणा, अधर्मीको लागि छैन बरु त्यस व्यक्तिको लागि छ जुन एक अल्लाहमा विश्वास राख्छ । यो संसारमा अधर्मी पनि लाभान्वित हुन्सक्छ, तर परलोकमा प्रलयको दिन उसको कुनै पनि सहायक हुनेछैन । यसै कारण शान्तिको धर्ममा प्रवेश गर, त्रीलोकमा लाभान्वित भई स्वर्गमा प्रवेश गर ।

हे प्रिय पाठकहरू ! यस्तै अनेकौं इस्लामी निर्देशनहरू छन् जसलाई अपनाई र तयस

बमोजिम कर्म गरी हामी मृत्युको सुस्वागत गर्न सक्छौं । परिणामस्वरूप हामीलाई मृत्युबाट कुनै भयत्रास हुँदैन । इस्लामको प्रत्येक निर्देशनमा संसारको भलाई नीहित छ, जति अमानवीय क्रियाकलापहरू छन् त्यसबाट इस्लामले रोकेको छ जसरी चोरी, हक अधिकार हनन् गर्ने, बलात्कार गर्ने, अन्याय अत्याचार गर्ने, व्यभिचार अश्लील क्रियाकलापहरू गर्ने, कसैको नाहक हत्या गर्ने, सर्वसाधारणलाई आतंकित र हैरान पार्ने, क्षलकपट गर्ने, बेईमानी गर्ने, भुठ बोल्ने, ईर्ष्या गर्ने, गाली गलूज गर्ने, .......आदि यस्ता सबै कुराहरू जुन अमानवीय छन् सबैबाट इस्लामले रोकेको छ र इस्लामीय शास्त्र अनुसार यी कुराहरू वर्जित छन् ।

र जति कुराहरू मानवताको लागि कल्याणकारी छन् ती सबैलाई गर्ने आदेश गरेको छ । जस्तो न्याय गर्नु, मेलमिलाप गर्नु, ठूलालाई आदर र सानोलाई स्नेह गर्नु, भेट्नेलाई सलाम ( नमस्कार ) गर्नु, विरामीलाई सहायत गर्नु, उसको हेरचाह गर्नु, सत्य बोल्न, असत्यताको विरोध गर्नु, समाज र देशको कल्याणकारी कार्यहरू गर्नु, अमानवीय

गतिविधिहरूको विरोध गर्नु, ..... आदि यस जस्ता समस्त कार्य जुन संसारको लागि लाभदायक छन् त्यसलाई गर्ने आदेश दिन्छ ।

यो सबै निर्देशनहरू कसको लागि हुन् ?

हे मानवजाति हाम्रो लागि हुन्, इस्लामीय निर्देशनलाई अपनाई नै हाम्रो उद्धार हुन्सक्छ । र हाम्रो हृदयमा जुन मृत्युको भयत्रास छ त्यो लुप्त भइहाल्छ । किनकि राम्रो कर्म गर्नेले राम्रै प्रतिफल पाउँछ, टमाटरको खेत र बारीमा अन्गूर आँउदैन, जुन मान्छे जस वस्तुको खेती गर्छ सोही नै काट्छ । अर्थात सारा संसारको यो चक्र एउटै संकेत दिन्छ त्यसै हातलाई थाम जसको शक्ति असीमित छ त्यही सर्वशक्तिमानको अज्ञाकारी बन जसले समस्त संसारलाई स्थिर्ता प्रदान गरेको छ, र प्रत्येक वस्तुको एउटा सीमा निर्धारित गरेको छ जसले आफ्नो लागि बनाइएको सीमा उल्लंघन गऱ्यो पथविचलित भई बर्बाद भयो र स्वर्गबाट बञ्चित भयो ।

# निवेदन ! र समाप्ति

हे प्रिय पाठक गण ! जीवन र मृत्यु, आकाश र धरती, सूर्य र चन्द्र, र ब्रह्माण्डका समस्त वस्तुहरू परम्दयालु परम्ज्ञानी अल्लाहको स्पष्ट तर्क र निशानीहरू हुन् । यी सबै वस्तुहरू एक अल्लाहमा निर्भर छन् यी सबैको रचना उसै परम् शक्तिमानले गरेको छ, यी सबै उसैको गुणगानमा व्यस्त छन्, उसैको अज्ञापालनमा लागेछन्, उसैलाई आफ्नो दाता, पालनकर्ता, ईश्वर मान्छन् ।

मृत्यु जीवन ब्रह्माण्डको रहस्यमय सत्यता पनि त्यही अल्लाह नै हो, केवल एक उपासक जुन निराकार छ, जसको कुनै आकार हामीलाई थाहा छैन, हामीलाई उसको आकार कसरी थाहा हुन्सक्छ जबकि कसै मनुष्यले त्यसलाई हेरेकै छैन ।

त्यो अल्लाह नै हो जसको पूजाको निम्ति आकाश धर्ती र त्यसको बीचमा जेजति छन् सबैलाई उत्पन्न गरियो ।

हे मानवजाति ! समस्त संसार एक अल्लहलाई पहिचान गराउने साधन हुन्, विचार गर्दाखेरि यो संकेत मिल्छ कि यसलाई निर्माण गर्नेवाला सर्वशक्ति सम्पन्न अल्लाह नै हो ।

हे मानवजाति ! यो प्रकाशित सूर्य, यो टल्कदो चन्द्र, यो मस्त गगन, यो मधुर पवन, नदी, समुद्र, पहाड र झरनाहरू हामीलाई यो संदेश दिन्छन् कि हाम्रो पालनकर्ता एउटै छ, सबैको स्वरमा एउटै श्लोक छ " अल्लाहु अहद " अल्लाह एक नै छ, ईश्वर एउटै छ त्यस बाहेक कोही पनि उपास्य छैन । हे मानव त्यसैको गुणगान गर जसले सबैलाई सृष्टि गरेछ, जसले खाना खुवाउँछ, जसले विरामीलाई निको पार्छ, जसले हामीलाई यो स्वस्थ शरीर प्रदान गऱ्यो, हामीलाई आमा बाबुको स्नेहको छायाँ प्रदान गऱ्यो, फेरि जानी जानी त्यसको अवज्ञा नगर, त्यसको कुनै समकक्षी नबनाऊ, त्यसलाई क्रोधित नपार, कि तिमीलाई उस्तै समातोस् जसरी विगतका समूहहरूलाई समातेको थियो ।

हे मानवजाति ! यादराख जसले पनि अल्लाहको अवज्ञा गरे र उसको सीमा अतिक्रमण गरे त कसैलाई धरतीमा धंसाई दियो, त कसैलाई हूरीबाट नष्ट गऱ्यो, त कसैमाथि ढुङ्गाको वर्षा गरायो, त कसैलाई भयंकर चित्कारद्वारा आउनेहरूको लागि पाठ बनाइदियो । यो त्यो सत्य घटनाहरू हुन् जुन कुरआनमा वर्णन गरिएका छन् । र अझै यी वृतान्त समूहहरूको निशानीहरू पूरा विश्वमा बाँकी छन् चाहे त्यो समूदको समूह होस् वा आदको समूह, चाहे त्यो कारून होस् वा फिरऔन सबै यस संसारको लागि पाठ भए ।

सुन हे मानवहरू ! मोह माया जीवन मृत्युको चक्रवियुबाट बाहिर आऊ, आफ्नो पालनकर्तातर्फ जहाँ अनन्त शान्ति एवं परम् आनन्द छ । जहाँ न कसैको भय न कसैको त्रास छ, जहाँ प्रेमको बास स्वर्गको आशा छ । यो यस्तो दरबार हो जहाँबाट सबैलाई मिल्छ तिमीलाई के चाहिन्छ ? धन सम्पत्ति, छोरा छोरी, सबै मिल्छ एकचोटि आफ्नो मुटुलाई बहुदववादबाट स्वच्छ

गरी त्यस एक अल्लाहलाई पुकार अनि हेर त्यसको कृपा त्यसको महिमा त्यसको करुणा।

हे मनुष्यहरू ! बहुदेववादी र अधर्मीहरूका कुराहरूको वास्तै नगर, किनकि उनीहरू त शैतान पिचासका भइहरू हुन् र शैतान मानवहरूको शत्रु हो, आफ्नो शत्रुबाट बच र आफ्नो विश्वास एक अल्लाहमा सुदृढ गर, र शैतानको पाइलामा नहिंड किनकि त्यो तिमीलाई पनि अधर्मी बनाइदिनेछ।

हे मानवहरू ! आफ्नो स्रेष्टालाई अपनाऊ त्यो तिम्रो सबै पापलाई नष्ट पारिदिन्छ, तिम्रो सबै समस्याको निवार्ण गरिदिन्छ, र तिमीलाई यस्तो स्रोतबाट अनुकम्पा प्रदान गर्छ जसको तिमीले कल्पना पनि गर्नसक्दैनौं।

हे आदमको सन्तति ! आफ्नो हानि लाभलाई बुझ, के कसैको मुटु दुखाएर कसैको कल्याण भएछ ? के कसैलाई अकारण र बिना दोष मारेर कसैको भलो भएछ ? यदि निर्मल आनन्दको चाहना छ भने इस्लामी निर्देशनको अनुशरण गर अनि अनन्त शान्ति भोग।

हे मनुष्य ! के एक उपासकको उपासना उत्तम छ अथवा अनेकौं उपासकको ? जब एक राज्यमा दुई राजा हुन असम्भव छ त यस संसारको अनेकौं उपासक कसरी हुन सक्छन् ?

हे सर्वश्रेष्ठ सृष्टि ! के यति पनि बुझ्दैनौ, विचार गर ! यदि एक भन्दा अधिक पूज्य भएको भए के यो संसारको संतुलन बाँकी रहन्थ्यो ? एउटाले भन्थ्यो आज वर्षा हुन्छ, त आर्कोले भन्थ्यो आज घाम हुन्छ, तेस्रोले भन्थ्यो आज त दिनै हुँदैन बरु रात्री नै रहनेछ । अर्थात यो संसारको विनाश निश्चित थियो ।

हे मानवजाति ! यो संसारको संतुलन नै यो संकेत दिन्छ कि यसको संचालक र पूज्य एउटै छ, र त्यो नै उपासना योग्य छ । यदि एक भन्दा अधिक उपासक भएको खण्डमा तिमी कस कसको उपासना गर्छौ, एउटालाई मनाउँदा आर्को क्रोधित भइहाल्छ र पहिलोलाई मनाउँदा आर्को रिसाइहाल्छ । भक्तको अवस्था के हुन्छ विचार गर ? यो सबै शेतानले विस्तार गरेको जाल हो यसमा नपर्नु, मात्र एउटा अल्लाहलाई समातिहाल सबै संकोचहरू मेटी

हाल्नेछन् र भक्ति जटिलबाट सजिलो भइहाल्छ र भक्तिको वास्तविक स्वाद मिल्छ।

हे मानवताका रक्षकहरू ! के तपाईलाई थाहा छ कि मानवताको रक्षा कसरी हुनसक्छ ? संसारमा शान्तिको विस्तार कसरी हुन्छ ? अमीर गरीब कसरी एकमत हुन्छन् ? कालो गोरो कसरी एकनास हुन्छन् ?

केवल इस्लामलाई अपनाएर, एक ईश्वरमा आस्था राखेर, मानवताको रक्षा गर्न सकिन्छ, र पूर्ण संसारमा शान्ति ल्याउन सकिन्छ । किनकि इस्लाममा गोरो कालो, अमीर गरीब, जात पातको केही भेदभाव छैन, अल्लाहको दृष्टिमा सबै एकनास छन् , महान व्यक्ति त्यही हो जुन सबै भन्दा मुत्तकी छ । अर्थात सबै भन्दा अल्लाह सित डराउनेवाला छ , अल्लाहको अज्ञाकारी छ ।

रंग रूप धन सम्पत्तिको कुनै महत्व छैन महत्व छ केवल कर्मको, अज्ञाकारिताको । यदि इस्लामी निर्देशनहरू सारा संसारमा लागू गरियो

भने कुनै मान्छे चोरी गर्दैन, किनकि हात काटिन्छ। कुनै मान्छे व्यभिचार एवं बलात्कार गर्दैन, किनकि ज्यान जाने खतरा छ। कुनै मान्छे कुनै मान्छेको धन खोसदैन, किनकि क्षतिपूर्तिको साथ साथै दण्ड पनि पाउने छ। रकसी एवं मदिरा सेवन गरेर कसैलाई हानि पुऱ्याउन मिल्दैन किनकि भयानक दण्ड मिल्नेछ.....आदि। अर्थात हाम्रो समाजमा जतिपनि बुराईहरू छन् सबै नष्ट भइहाल्छन् अनि स्वच्छ समाजको निर्माण हुन्छ, स्वच्छ वातावरणको सृजना हुन्छ, र समाजको उन्नति हुन्छ, र समस्त संसारमा शान्तिको अविष्कार हुन्छ, अनि मानव र मानवताको कल्याण भइजान्छ, र यो संसार स्वर्ग झै सुदर्शित हुनेछ।

अन्तमा मेरो अल्लाह सित के प्रार्थना छ भने म यही विन्ती गर्छु कि हे अल्लाह हाम्रा समस्त पाठकहरूलाई मार्गदर्शन गर, र सबैलाई आफ्नो दयाको पात्र बनाऊ र सबैलाई स्वर्गको बाटो देखाऊ। सबैको त्रुटिलाई क्षमा गर, र सबैलाई

इस्लाम स्वीकार गर्ने सौभाग्य प्रदान गर, र सबैलाई नर्कको यातनाबाट बचाइहाल ।

**हे हाम्रो पालनकर्ता** हामी मध्ये जुन विरामी छन् उनीलाई संचो पारिदेऊ, जुन निसंतान छन् उनीलाई आफ्नो कृपाले संतान प्रदान गर तेरो महिमा अपरम्पार छ । र हामी मध्ये जुन निमुखा निसहाय छन् उनीलाई आफ्नो अनुकम्पाबाट प्रदान गरी समृद्ध बनाइदेऊ, र उनको संकुचित अवस्थालाई आफ्नो कृपाले पवित्र रोजी देऊ र हाम्रो हृदयबाट संसारिक मोह मायालाई झिकी परलोकको माया सृजना गरिदेऊ, र हाम्रा पाइलाहरूलाई सत्मार्गमाथि सुदृढ गरिदेऊ ।

**हे पालनकर्ता** ! हामीलाई यस्तो सुकर्मको सुअवसर प्रदान गर जुन लोक परलोक दुवैमा हाम्रो निम्ति लाभदायक सिद्ध होस् र तिम्रो प्रसन्नताको कारण बनोस्, तिम्रो त्यो प्रसन्नता जसलाई प्राप्त गरी तिम्रा संदेष्टाहरू धन्य भए र स्वर्गको पात्र भए ।

हे पालनकर्ता ! हामी सबैलाई आफ्नो सत्यबाटो इस्लाममाथि चल्ने शक्ति एवं भक्ति प्रदान गरी स्वर्ग प्रदान गर । (आमीन)

**लेखक**

**अतीकुर्रहमान मुहम्मद इदरीस खान मक्की**

**कपिलवस्तु नगरपालिका वार्ड नं. ९ महुवा**

**तौलिहवा कपिलवस्तु (नेपाल)**

email- atiqkhannp1982@yahoo.com

**सम्पर्क नं. ००९७७९८१९४३७७५८**

**सउदी मो. न. ००९६६५०१३७२२५४**